

## केशरमान ताम्राकार

**जन्म :** वि.सं. २०११ कात्तिक, मरु पीगंननी, काठमाडौं । **शिक्षा :** एम.एस्सी. (केमेस्ट्री) । **सम्पर्क :** सिकागो, अमेरिका । **कृति :** लघुकथासङ्ग्रह मिफुति (वि.सं. २०३४), लागाय् जि (वि.सं. २०३७), जि विश्वास म्वाय्-कथासङ्ग्रह (वि.सं. २०४० । सिकागो वार्षिक पत्रिका अङ्क १-६ का प्रधान सम्पादक । **पुरस्कार/सम्मान :** The Asian American Hall of fame बाट सामुदायिक सेवा पुरस्कार, अमेरिका-सन् २०१३), नेवा: अमेरिकन दबू-सम्मान (वि.सं. २०७४), पूर्वराजा वीरेन्द्रबाट शिक्षा सेवा सम्मान, रुजवेल्ट विश्वविद्यालय सिकागोबाट सम्मान (सन् २०१०), युटाह भ्याली विश्वविद्यालयबाट मेमोरिज अफ माइलस्टोन प्रमाणपत्र (सन् २०१९) ।

# हिरामोती

## केशरमान ताम्राकार

मेरो नाम हिरामान। उनको नाम मोतीशोभा। दुवैलाई मिलाएर छोटकरीमा हिरामोती।

उनलाई भेट्दा म भर्खरको सोह्रवर्षे युवा। त्यस्तै उनी पनि सोह्रवर्षे युवती। दुवै एउटै उमेरका हामी एसएलसी दोस्रो श्रेणीमा पास भएको आजभन्दा ४९ वर्षअघि। मैले जेपी स्कुलबाट एसएलसी दिएको। उनले कन्या मन्दिरबाट दिएकी। दुवैको एउटै इच्छा, डाक्टर बन्ने। त्यसैले म साइन्स कलेजमा भर्ना भएँ। उनी पनि साइन्स कलेजमै भर्ना भइन्। दुवैले एउटै मेजर बायोलजी लियौँ, जुन भविष्यमा डाक्टर बन्ने सपना बुनेर पढ्ने विषय हो। यो कुरो हो २०२४ सालको। पहिलो पटक एकले अर्कोलाई देखादेख भएको कलेजमा भर्ना भएको दिन रजिस्ट्रेसन अफिसमा। हुलका हुल मान्छेहरू। फर्म बुझाउने, पैसा तिर्ने सबै काम त्यो अफिसमा। उनी र म एउटै लाइनमा। उनी अलि अगाडि, म अलि पछाडि। उनी बेलाबेलामा पछाडि हेर्दा लाइनमा बसिरहेको मसित कहिलेकाहीँ आँखा जुध्थ्यो। त्यति बेला मलाई के गरूँ के गरूँ हुन्थ्यो। बोलचाल भएको थिएन। मान्छेहरू हुलका हुल। त्यति बेला उनी लजाएको मैले चाल पाएको थिएँ। लाइनमा मभन्दा उनी अगाडि भएकीले उनको फर्म बुझाउने काम सकियो। म अझै लाइनमा। उनी गएको मैले हेरिरहेँ। उनले फर्केर हेर्लिन् कि भन्ने आसमा। फर्केर हेरिनन्।

भर्ना भएर एक हप्तापछि पढाइ सुरु भयो।

दुई वर्ष पढेपछि आइ. एस्सी. सकिन्छ। अनि डाक्टरी पढ्न धेरैजसो विदेशमा-इन्डियामा छात्रवृत्ति लिई पढ्न जाने चलन छ। मेरो उद्देश्य पनि यही नै हो। उनको इच्छा पनि त्यही होला। हुन त आइ. एस्सी. बायोलजी

ग्रुप एउटै मात्र। त्यसैले हामी दुवैसँगै एउटै क्लासमा हुने भइहाल्यो। हिरामान र मोतीशोभा। एउटै क्लासमा भएपछि बोलचाल पनि हुँदै गयो। ल्याबमा पनि कहिलेकाहीँ एकले अर्कोलाई मदत गर्ने हुन थाल्यो। धेरैजसो मैले नै उनलाई मदत गरेको छु। हाम्रो बिचमा एकआपसमा गहिरो मित्रता हुन गयो। हामीबिच धेरै कुराहरू साटासाट हुन थाल्यो। समय मिलेपछि दुई जना मात्र बसेर आआफ्ना कुरा भलाकुसारी पनि हुन थाल्यो। हामीबिच प्रेम शब्दचाहिँ कहिल्यै साटिएन। आआफ्ना घरका बारे पनि कुराकानी हुन्थ्यो। हाम्रो यस्तो कुराकानीबाट उनले मेरो सपरिवार चिनिन्। मैले उनको परिवार चिनेँ। वर्ष दिन पनि पूरा नहुँदै हामी यति नजिकियौँ कि मानौँ हामी सानैदेखि चिनजान भएका साथीहरू जस्तै भयौँ। कहिलेकाहीँ त कलेजको कौसीमा बसी कुरा गर्ने बेलामा क्लास सुरु भइसकेको पनि होसै नहुने। कतिपल्ट त क्लास नै छुट्ने गरी गफ गरिरहन्थ्यौँ। कुरा पनि कताबाट आउँछ, आउँछ। घण्टौँघण्टौँ कुरा गरे पनि सिद्धिन्न। कहिलेकाहीँ हाम्रो चर्तिकला देखेर साथीहरूले आँखा तरेर हेरेको पनि हामी दुवैले चाल पाउँथ्यौँ। तर उनी पनि चुप, म पनि चुप। हामी दुवै मुखामुख गरी हाँस्थ्यौँ। हुन त उनी अलि लजालु किसिमकी थिइन्। मलाई जस्तै धेरै बोल्न नपर्ने। तर मसँग गफ गर्ने बेलामा मलाई नै माथ गर्ने गरी कुरा गर्थिन्।

अरूसँग त्यस्ती थिइनन्।

यति अगाडि बढिसक्दा पनि हामी साथी-साथी। हामी प्रेमिल जोडी थिएनौँ। हामी दुवैले प्रेमको परिभाषा बुझेका थिएनौँ। तैपनि म उनको आँखामा सबभन्दा धेरै प्रेम देख्थेँ। उनको आँखा नै मेरा लागि प्रेम थियो। उनले मलाई हेर्ने नजरमा मैले मोती देख्न थालेँ। उनले पनि सायद मेरो हेराइमा हिरा देखिन् होलिन्। म हिरा देख्छु, उनी मोती देख्छिन्। आखिर हामी दुवै हिरामोती त हौँ। अर्को अर्थमा भन्ने हो भने हिरामोती प्रेममा नयाँ संज्ञा हुन सक्छ। कहिलेकाहीँ कलेजका साथीहरूले हामीलाई जिस्क्याउँदै–हिरामोती, हिरामोती भनेको हामीले सुनेका छौँ। त्यस्तो भनेको बेलामा एक-दुई पटक उनी लजाएकी मैले दखेको छु। मलाई थाहा छ, उनको लजाइको हाउभाउ। कहिलेकाहीँ म उनलाई जिस्क्याउँदै भन्थेँ– लैलामजनुँ, रोमियोजुलियट, हीररााँझा जस्तै हिरामोती पनि भए कस्तो होला ? उनी हाँस्छिन् मात्र। उनको त्यो हाँसोमा म रमाइलो अनुभव गर्थेँ। कति कति खुसी... मानौँ खुसीको सीमा नै नहुने गरी।

हामी चाहिनेभन्दा बढी नै नजिकिन थाल्यौँ। कलेजबाट फर्किने बेलामा उनको घरसम्म पुऱ्याइदिन्थेँ। उनले हाँसेर जाऊँ है भनेको स्वर नै

मलाई अत्यन्त मन पर्ने भइदिन्छ । कसैले केही भन्ला कि भन्ने डर पनि उनलाई लाग्न छोड्यो । मैले उनलाई दिनहुँ घरसम्म छोडिदेओस् भन्ने उनको आशा हुन्थ्यो । कहिलेकाहीँ मात्र यो क्रम टुट्छ । त्यस्तै कलेज जाने समयमा पनि उनी निस्कने समय अनुमान गरेर उनको घरमुनिबाट जान्थेँ र भेटेपछि दुवै गफिँदै कलेज पुग्थ्यौँ । कहिलेकाहीँ बाटोमा कलेजका अन्य साथीहरूसित भेट हुन्छ, त्यति बेला हामीलाई साथी होइन, घाँडो जस्तो लाग्छ ।

कति छिटो दुई वर्ष बितेको । २०२६ साल चैत १० गते हाम्रो आइ. एस्सी.को रिजल्ट निस्क्यो । दुवै प्रथम श्रेणीमा पास भयौँ । हामी सारै खुसी भयौँ । उनलाई आरती स्विट्समा लगेर रसमलाइ खुवाएँ । उनलाई असाध्यै मन पर्ने रसमलाइ भनेर कुनै दिन भनेको सम्भेर चार-चारओटा दुवैलाई अर्डर गरेँ । त्यस बेला उनी खुसी भई मलाई छोऊँछोऊँभैँ गरेकी थिइन् । सायद हामी दुई प्रेमिल जोडी हुँदो हो त उनले मलाई अँगालो मारेर मायालु हाउभाउले आँखामा आँखा जुधाउँथिन् होला । हामी दुई वर्षसम्म यसरी नजिकिँदा पनि उनले मलाई प्रेम गर्छु भनिनन् । मैले पनि उनलाई मन पराउँछु भन्न सकिनँ । मानौँ हामी दुवै एउटा रमाइलो युद्धमा थियौँ । जसले पहिला प्रेम प्रस्ताव राख्छ ऊ हार्नेजस्तो । मानौँ हार्न कोही नचाहने । रमाइलो युद्धको अन्त भएन- अगाडि बढ्दै गयो ।

आइ. एस्सी.पछि दुवै त्यही कलेजमा भर्ना भयौँ । दुवैले बोटानी मेजर लियौँ । तर आइ.एस्सी. जस्तै बी. एस्सी. एउटै क्लासमा परेनौँ । हामीलाई सारै नरमाइलो लाग्यो । हामी दुवैले रजिस्ट्रेसन अफिसमा गएर एउटै क्लासमा राखिदिनुस् भनेर अनुरोध पनि गर्‍यौँ । सबै प्रक्रिया पूरा भइसकेकाले फेर्न मिल्दैन भनेर गरिदिएनन् । दुवै मलिन अनुहार लिएर फर्क्यौँ । हुन त हाम्रो लक्ष्य डाक्टर हुने हो । बी. एस्सी.मा सँगै बस्नु होइन । तैपनि पढ्न नगएसम्मलाई बी. एस्सी. क्लासमा भर्ना भएका हौँ । दुई सय पचास फी तिरेर । बी. एस्सी. पढ्दापढ्दै डाक्टर पढ्नका लागि शिक्षा मन्त्रालयबाट छात्रवृत्तिको सूचना निस्क्यो । कोलम्बो प्लानअन्तर्गत विभिन्न देशमा छात्रवृत्तिमा पढ्न जानलाई हामी दुवैले फाराम भर्‍यौँ । फाराम भरिसकेपछि क्लासमा जान पनि मन नलाग्ने हुन थाल्यो । किनभने हामीले आइ. एस्सी.मा बढी मार्क्स ल्याइसकेका थियौँ । तैपनि अर्कोतिर डर पनि छ । कतै दरबारको भिटो पावर लगाएर हामीलाई एकातिर पन्छाइदेला कि भनेर । अन्तर्वार्ता दियौँ शिक्षा मन्त्रालय केशर महलमा ।

एक हप्तापछि अन्तर्वार्ताको परिणाम निस्क्यो शिक्षा मन्त्रालयको सूचनापाटीमा । हामी दुवैलाई एम.बी.बी.एस. पढ्नका लागि छात्रबृत्ति

मिल्यो । सारै खुसी भयौँ । तर दुःखको कुरा, उनी आर. जी. मेडिकल कलेजमा परिन् भने म बङ्गलादेशको मेडिकल कलेजमा । एक्कासि हामी दुवैको अनुहार अँध्यारो भयो । यसपालि मैले उनलाई रसमलाइ होइन, उनले मलाई लालमोहन खुवाइन्- आरती स्विट्समा ।

महिना दिनपछि हामी दुवै उड्यौँ । समय-समयमा पत्र आदानप्रदान गर्ने वचन लिएँ, वचन दिएँ । छुट्टिनुअघि पहिलोपल्ट अँगालो मारेँ । एउटा अनौठो मिठो अनुभव भयो मलाई । सायद उनलाई पनि त्यस्तै भयो होला ।

मोबाइलको घण्टी बज्नासाथ हिरामानको सम्झना चुँडियो । टेबुलमा राखेको मोबाइल उठाएर कानमा राख्यो ।

- "हलो...।"

- "म विमला...।" उताबाट आवाज आयो ।

विमला हिरामानको कलेजको साथी । त्यस समयमा हिरामान र मोतीशोभालाई जिस्क्याइरहने ।

- "अहो ! के छ त विमला म्याडम ? धेरैपछि फोन गऱ्यौ नि । कता, काठमाडौँमै हो ?"

धेरैजसो बाहिर-बाहिर गइराख्छिन् विमला शाक्य ।

- "हो यतै हो । बैङ्ककबाट यतै बस्नलाई आएको दुई महिना भइसक्यो ।"

- "ए...त्यसो भए बच्चाहरू उतै छोडेर जोईपोइ दुवै यतै सधैँका लागि भयो हैन त ?"

- "हो । तिमीलाई एउटा कुरा भनूँ भनेर ।"

- "के कुरा...?"

- "तिम्रो मिल्ने साथी मोतीशोभा नेपाल घुम्न आइराखेकी छे नि । थाहा छ तिमीलाई ?" मोतीशोभाको नाम लिनासाथ हिरामान एकछिन झस्क्यो । मोतीशोभासितका पुराना कुराहरू सम्झिरहेको थियो, एक्कासि विमलाको फोनले हिरामान एकछिन अलमल पऱ्यो । उत्तिखेरै प्रश्न गऱ्यो विमलालाई- "के भन्यौ, त्यही बेपत्ता भएकी मोतीशोभा हो ?"

- "हो, भन्या हो ।"

- "कहिले आएकी ?" मोतीशोभाको कुरा सुन्न मन लाग्यो हिरामानलाई । डाक्टर पढेर आइसकेपछि एकपल्ट मात्र भेटेको थियो हिरामानले । त्यो बेला मोतीशोभाको सिउँदो रङ्गिएको देखेपश्चात् हिरामानलाई उनको मुखै हेर्न मन लागेन र फनक्क फर्केर गएको थियो । तर आज त्यतिका वर्षपछि विमलाले मोतीशोभाको कुरा निकालेपछि पुरानो सम्झनाले फेरि तान्यो ।

- "कहिले आएकी नि उनी ?" हिरामानले फोनमै प्रश्न गर्‍यो ।

- "एक हप्ता भयो । तिमीलाई एकपल्ट भेट्ने इच्छा गरेकीले फोन गरेकी । भेट्ने हैन त ?"

हिरामानले एक्कासि जबाफ दिन सकेन । एकछिन मौन बस्यो ।

- "हुन्छ, उनले भेट्ने इच्छा गरेकी भए मैले किन नाइँ भनूँ ? बरु कहाँ भेटौँ ?"

- "मेरै घरमा आऊ न है भोलि दिउँसो २ बजे ।"

- "हुन्छ म आउँछु ।" हिरामानले फोन राख्यो ।

किन उनले त्यतिका समयपछि मसित भेट्ने इच्छा गरिन् ? आफूले आफैँलाई प्रश्न गर्‍यो हिरामानले ।

उनको के कुरा भन्नु छ ? मलाई चटक्कै बिर्सेर गएकीसँग के कुरा होला र ? त्यो पनि उनको लोग्ने म जस्तो छैन भनेर बताउनलाई भेट्न खोजेकी त हैन ? अब म यस्तो छु, उस्तो छु भन्ने कुरा गरेर के फाइदा ? मेरो पनि बिहे भइसकेको छ । छोराछोरी छन् । लगभग ६४ वर्ष भइसकें । त्यस्तै उनका पनि छोराछोरी भइसके होलान् । म जस्तै उनी पनि ६४ की भइन् । म त बाजे पनि भइसकें । थाहा नपाइने गरी बुढो हुँदै गइरहेको छु । उनको पनि मेरो जस्तै अनुहार चाउरी परिसक्यो होला । पहिला सुलुत्त परेकी पातली अहिले त मोटाएर डल्ली भइन् होली । सायद हजुरआमा पनि भइसकिन् कि । चिन्न पनि सक्छु कि सक्दिनँ । किन नचिन्नु ? आफैँलाई प्रश्न गर्‍यो हिरामानले । उसको आँखामा त्यस बेलाकी मोतीशोभाको अनुहार ठिङ्ग उभिन आयो । गोरो अनुहार । रुन्चे आँखा । बाटुलो नपरेको मुहार । सधैँ गाजलको टीका निधारमा । सुलुत्त परेको नाक । बाक्लो ओठ । हाँस्ने बेलामा कोहीभन्दा कम छैनन् उनी । कहिलेकाहीँ उनको शृङ्गार राणा महिलाहरूको जस्तै देखिन्छ...। मोतीशोभाको रूप सम्झीसम्झी हिरामान एकपल्ट फेरि आफैँमा हरायो ।

हिरामानलाई दुई बजाउन हतार भयो । त्यही दिनमा कपाल रङ्ग्याएकाले सेतो कपालको चिन्ता गर्नु पनि परेन, एकपल्ट हिरामानभित्र शक्ति सञ्चार भयो । उसले आफूलाई बिस वर्षको कल्पना गर्‍यो । भन्दाभन्दै १ बज्यो । हिँडेर जानुभन्दा ट्याक्सीमा जाने विचार आयो । बानेश्वरसम्म जानुपर्ने । हिँडेर जानु ठिक होला जस्तो लागेन । त्यसमाथि घुँडाको रोगी । धेरैबेर हिँड्न गाहारो हुन्छ । घरबाट बाहिर निस्क्यो । एउटा ट्याक्सी लियो । "नयाँ बानेश्वर जाने, एभरेस्ट बैङ्कसँगै ।" ड्राइभरलाई गन्तव्य बतायो । ट्याक्सी अघि बढ्यो । भद्रकाली पुग्न लाग्दा ट्राफिक जाम देखियो । केको जाम हो यो ? जुलुस आएको हो कि क्या हो ? तर जुलुस

नभएर राष्ट्रपतिको सवारी रहेछ । सिंहदरबारदेखि नै बाटो बन्द गरिएको रहेछ । लौ खतम । मोटर अघि बढ्ने कुरै भएन । छिनछिनमा आँखा घडीमा जान्थ्यो- पौने दुई बज्न लाग्यो । दुई बज्यो । साढे दुई बज्यो । अहँ, बाटो खुल्दै खुलेन । ट्याक्सीको मिटर खुरुखुरु चढिरह्यो । तीन बज्न लाग्दा बल्ल गाडी गुड्न सुरु भयो । हिरामानले बल्ल लामो सास तान्यो । विमलालाई फोन गर्नुपर्ला भनेर सोच्यो । फोन गऱ्यो । बिजी टोन मात्रै आइरह्यो । उसले एकपल्ट घडीमा हेऱ्यो । सवा तीन । एभरेस्ट बैङ्कनिर ट्याक्सी रोकियो । विमलाको घरतिर हतारहतार पाइला चाल्यो । घरको कलबेल थिच्यो । केही समयपछि विमला ढोकामा देखा परिन् ।

हिरामानलाई एकपल्ट टोलाएर हेरिन् ।

- "दुई बजे भनेको कति बज्यो ?"

- "हो, एक घण्टा त जाममै परेँ । मोतीशोभा माथि हो ?"

- "उनी त एकै बजे आइपुगेकी थिइन् । कुर्नसम्म कुरिन्, कुरेर भएन भनिन् । अब आउँदैन होला भनेर एकैछिन अघि हिँडिन् ।" विमलाको कुरा सुनेर हिरामानको अनुहारभरि बादलले ढाक्यो । हिरामानको अँध्यारिँदै गएको मुहार हेर्दै विमला बोलिन्- "जाऊँ माथि । उनी गए पनि मसँग कुरा गरे त हुन्छ नि । अँ, मोतीशोभाले तिमीसँग भेट्न त पाइनन् । तैपनि उनले एउटा कागज छोडेर गएकी छन् ।"

दुवै ढोका लगाएर माथि उक्ले । सोफामा बस्यो हिरामान । विमलाले मोतीशोभाले लेखेर छोडेकी सानो कागजको टुक्रा हिरामानलाई दिइन् । हिरामानले हतारपतारमा कागज खोलेर हेऱ्यो ।

दुई लाइनमा मोतीशोभाले लेखेकी रहिछन्- "मैले मेरो छोराको नाम राखेँ 'हिरा ।' तिमीले पनि छोरीको नाम सायद 'मोती' राखेका होलाऊ ।"

हिरामानको आँखा एक्कासि आँसुले भरियो ।

अनि उसले मनमनै भन्यो- "तिमीले जित्यौ । म हारेँ । तिमीले हिरा पायौ । मसँग मोती भएन ।"



